# दैवी प्रकोप (उद्धार) ऐन, २०३९

प्रमाणीकरण र प्रकाशन मिति

**संशोधन गर्ने ऐन** २०३९।९।८

१. न्याय प्रशासन सुधार (चौथो संशोधन) ऐन, २०४३ २०४३।७।२४

२. दैवी प्रकोप (उद्धार) (पहिलो संशोधन) ऐन, २०४६ २०४६।७।११

३. दैवी प्रकोप (उद्धार) (दोस्रो संशोधन) ऐन, २०४९ २०४९।६।१४

◎२. गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६६ २०६६।१०।७

## २०३९ सालको ऐन नं. २०

## दैवी प्रकोपसम्बन्धी उद्धार कार्यको लागि व्यवस्था गर्न बनेको ऐन

**प्रस्तावना** : दैवी प्रकोपबाट सर्वसाधारण जनताको जीउधन तथा सार्वजनिक सम्पत्तिको सुरक्षा गर्नको लागि दैवी प्रकोप उद्धार कार्यहरू गर्ने सम्बन्धमा व्यवस्था गर्न र सर्वसाधारण जनताको सुविधा कायम राख्न वाञ्छनीय भएकोले,

श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेवबाट राष्ट्रिय पञ्चायतको सल्लाह र सम्मतिले यो ऐन बनाइबक्सेकोछ ।

१. **संक्षिप्त नाम र प्रारम्भ** : (१) यस ऐनको नाम "दैवी प्रकोप (उद्धार) ऐन, २०३९" रहेकोछ ।

(२) यो ऐन तुरुन्त प्रारम्भ हुनेछ ।

२. **परिभाषा** : विषय वा प्रसंगले अर्को अर्थ नलागेमा यस ऐनमा,-

(क) "दैवी प्रकोप" भन्नाले भूकम्प, आगलागी, आँधीवेरी, बाढी पैह्रो, अतिवृष्टि, अनावृष्टि, अनिकाल, महामारी तथा यस्तै अन्य प्राकृतिक प्रकोपलाई सम्झनुपर्छ ✚र सो शब्दले औद्योगिक दुर्घटना विष्फोटक वा विषाक्त पदार्थद्वारा हुने दुर्घटना तथा यस्तै अन्य कुनै पनि प्रकारको प्रकोपलाई समेत जनाउनेछ ।

(ख) "संकटग्रस्त क्षेत्र" भन्नाले दफा ३ बमोजिम घोषित संकटग्रस्त क्षेत्र सम्झनुपर्छ ।

◎ यो ऐन संवत् २०६५ साल जेठ १५ गतेदेखि लागू भएका प्रशस्ती र अधिराज्य शब्द झिकिएको ।

✚ पहिलो संशोधनद्वारा थप ।

◆(ग) "दैवी प्रकोप उद्धार कार्य" भन्नाले दैवी प्रकोपबाट असर परेको वा पर्न सक्ने क्षेत्रमा दैवी प्रकोपको नियन्त्रण र रोकथाम तथा तत्सम्बन्धी पूर्व तयारी र दैवी प्रकोपबाट जनतालाई परेको पीरमर्का तथा असुविधा हटाउनको लागि दैवी प्रकोपबाट पीडित जनताको पुनर्स्थापना तथा दैवी प्रकोपबाट असर परेको क्षेत्रको पुनर्निर्माण गर्ने कार्य लगायत दैवी प्रकोपबाट सर्वसाधारण जनताको जीउधन तथा सार्वजनिक सम्पत्तिको सुरक्षाको लागि गरिने जुनसुकै उद्धार कार्य सम्झनुपर्छ ।

◆(घ) "केन्द्रीय समिति" भन्नाले दफा ५ बमोजिम गठित केन्द्रीय दैवी प्रकोप उद्धार समिति सम्झनुपर्छ ।

✚(घ१) "क्षेत्रीय समिति" भन्नाले दफा ७ बमोजिम गठित क्षेत्रीय दैवी प्रकोप उद्धार समिति सम्झनुपर्छ ।

(ङ) ✂ ... ... ... ... ... ...

◆(च) "जिल्ला समिति" भन्नाले दफा ७ बमोजिम गठित जिल्ला दैवी प्रकोप उद्धार समिति सम्झनुपर्छ ।

✐(छ) "स्थानीय समिति" भन्नाले दफा ७ बमोजिम गठित स्थानीय दैवी प्रकोप उद्धार समिति सम्झनुपर्छ ।

३. **संकटग्रस्त क्षेत्र घोषणा गर्ने** : ◆(१) नेपाल सरकारले आवश्यक देखेमा दैवी प्रकोपबाट असर परेको वा पर्न सक्ने क्षेत्रको सीमाना तोकी नेपाल राजपत्रमा सूचना प्रकाशन गरी सोही सूचनामा तोकिएको अवधिको लागि संकटग्रस्त क्षेत्र घोषणा गर्न सक्नेछ ।

(२) उपदफा (१) बमोजिमको अवधिभित्र दैवी प्रकोपबाट उत्पन्न स्थितिलाई काबुमा ल्याउन नसकेमा त्यस्तो अवधि नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशित गरी आवश्यकता अनुसार बढाउन सक्नेछ ।

---

◆ पहिलो संशोधनद्वारा संशोधित ।
◆ पहिलो संशोधनद्वारा संशोधित ।
✚ पहिलो संशोधनद्वारा थप ।
✂ दोस्रो संशोधनद्वारा खारेज ।
✐ पहिलो संशोधनद्वारा थप भई दोस्रो संशोधनद्वारा संशोधित ।

४. **नेपाल सरकारले आदेश दिन सक्ने** : नेपाल सरकारले सङ्कटग्रस्त क्षेत्रमा दैवी प्रकोप उद्धार कार्य गर्न गराउनको लागि देहायको कुनै वा सबै काम गर्ने आदेश आवश्यकता अनुसार सम्बन्धित कसैलाई पनि दिन सक्नेछ :-

(क) सङ्कटग्रस्त क्षेत्रमा आवश्यकता अनुसार सरकारी वा गैर सरकारी कार्यालय, शिक्षण संस्था तथा अन्य संघ संस्थाहरूलाई केही अवधिको लागि बन्द गर्ने,

(ख) सङ्कटग्रस्त क्षेत्रमा दैवी प्रकोप उद्धार कार्यमा प्रतिकूल असर पर्न सक्ने कुनै काम कारवाई गर्न नदिने,

(ग) सरकारी वा गैर सरकारी कार्यालय वा संस्थाका कर्मचारीहरूलाई काजमा खटाउने,

(घ) सङ्कटग्रस्त क्षेत्रभित्रका व्यक्तिहरूलाई सुरक्षित स्थानमा सार्ने वा सार्न लगाउने,

(ङ) दैवी प्रकोप उद्धार कार्यको प्रयोजनको लागि कुनै व्यक्ति वा संस्थाको चल अचल सम्पत्ति उपयोग गर्न आवश्यक भएमा तोकिएको अवधिभरको लागि अस्थायी तवरले प्राप्त गर्ने,

(च) सङ्कटग्रस्त क्षेत्रमा रहेका मालसामानहरू सुरक्षित स्थानमा सार्ने वा सार्न लगाउने,

(छ) सरकारी स्रोत तथा साधनलाई उपयोग गर्ने,

(ज) सम्बन्धित जिल्लाभित्रका गैर सरकारी कार्यालय, संस्था वा व्यक्तिको सवारी साधनलाई कुनै निश्चित अवधिसम्मको लागि नियन्त्रणमा लिने र प्रयोग गर्ने,

(झ) सम्बन्धित जिल्लाभित्रको गैर सरकारी कार्यालय, संस्था वा व्यक्तिको खाद्यान्न, लत्ताकपडा, औषधि, निर्माण सामाग्री तथा अन्य वस्तुहरू नियन्त्रणमा लिने र दैवी प्रकोपद्वारा पीडित व्यक्तिहरूलाई वितरण गर्ने,

(ञ) सङ्कटग्रस्त क्षेत्रमा पर्ने जग्गा, घर, कल-कारखाना, देव-देवालय तथा धार्मिक स्थल र अन्य यस्तै महत्वपूर्ण वस्तु वा स्थानलाई विनाश हुनबाट बचाउन उपाय गर्ने,

(ट) सहयोग टोलीहरू गठन गरी सङ्कटग्रस्त क्षेत्रमा पठाउने,

(ठ) सर्वसाधारण जनताको जीउधनको रक्षाको लागि अन्य आवश्यक सुरक्षात्मक उपायहरूको व्यवस्था गर्ने,

(ड) नेपाल सरकारले तोकेको अन्य काम गर्ने ।

✚४क. **विदेशीको प्रवेशमा नियन्त्रण** : दैवी प्रकोपबाट असर परेको कुनै क्षेत्रमा विदेशी नागरिक वा संस्थाले कुनै प्रयोजनको लागि प्रवेश गर्न नेपाल सरकारको स्वीकृति लिनु पर्ने गरी नेपाल सरकारले आदेश जारी गर्न सक्नेछ ।

◆५. **केन्द्रीय दैवी प्रकोप उद्धार समितिको गठन** : (१) दैवी प्रकोप उद्धार कार्य सम्बन्धी नीतिको तर्जुमा गर्न, कार्यक्रम बनाउन र कार्यान्वयन गर्न तथा तत्सम्बन्धी अन्य आवश्यक काम कारवाही गर्न गराउनका लागि नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी केन्द्रीय दैवी प्रकोप उद्धार समिति गठन गर्न सक्नेछ । केन्द्रीय दैवी प्रकोप उद्धार समितिको कार्यविधि तथा सदस्यहरूको कार्यावधि सोही सूचनामा तोके बमोजिम हुनेछ ।

■(२) उपदफा (१) बमोजिम गठन हुने केन्द्रीय दैवी प्रकोप उद्धार समितिमा देहाय बमोजिमका सदस्यहरू रहनेछन् :-

| | | |
|---|---|---|
| (क) | गृह मन्त्री | -अध्यक्ष |
| (ख) | आवास तथा भौतिक योजनामन्त्री | -सदस्य |
| (ग) | स्वास्थ्य मन्त्री | -सदस्य |
| (घ) | सचिव, अर्थ मन्त्रालय | -सदस्य |
| (ङ) | सचिव, रक्षा मन्त्रालय | -सदस्य |
| (च) | सचिव, गृह मन्त्रालय | -सदस्य |
| (छ) | सचिव, परराष्ट्र मन्त्रालय | -सदस्य |
| (ज) | सचिव, निर्माण तथा यातायात मन्त्रालय | -सदस्य |
| (झ) | सचिव, जलस्रोत मन्त्रालय | -सदस्य |
| (ञ) | सचिव, सञ्चार मन्त्रालय | -सदस्य |
| (ट) | सचिव, वन तथा वातावरण मन्त्रालय | -सदस्य |
| (ठ) | सचिव, श्रम तथा सामाजिक कल्याण मन्त्रालय | -सदस्य |
| (ड) | सचिव, आपूर्ति मन्त्रालय | -सदस्य |
| (ढ) | सचिव, राष्ट्रिय योजना आयोगको सचिवालय | -सदस्य |



✚ पहिलो संशोधनद्वारा थप ।
◆ पहिलो संशोधनद्वारा संशोधित ।
■ दोस्रो संशोधनद्वारा संशोधित ।

| | | | |
|---|---|---|---|
| (ण) | उपरथी, ⏭जङ्गी अड्डा | -सदस्य |
| (त) | प्रहरी महानिरीक्षक, प्रहरी प्रधान कार्यालय | -सदस्य |
| (थ) | प्रतिनिधि, समाज कल्याण परिषद् | -सदस्य |
| (द) | प्रतिनिधि, नेपाल रेडक्रस सोसाइटी | -सदस्य |
| (ध) | प्रतिनिधि, नेपाल स्काउट | -सदस्य |
| (न) | महानिर्देशक, खानी तथा भूगर्भ विभाग | -सदस्य |
| (प) | महानिर्देशक, जल वायु विज्ञान विभाग | -सदस्य |
| (फ) | नेपाल सरकारबाट मनोनीत लब्ध प्रतिष्ठित दुई व्यक्ति | -सदस्य |
| (ब) | अतिरिक्त सचिव (दैवी प्रकोप सम्बन्धी काम हेर्ने), गृह मन्त्रालय | -सदस्य-सचिव |

■(३) केन्द्रीय समितिले दैवी प्रकोपबाट प्रभावित जिल्लाबाट प्रतिनिधित्व गर्ने सम्बन्धित सांसदलाई केन्द्रीय समितिको बैठकमा आमन्त्रण गर्नेछ ।

(४) केन्द्रीय समितिको आन्तरिक कार्यविधि केन्द्रीय समितिले आफैले व्यवस्थित गर्न सक्नेछ ।

✷**५क. उपसमितिको गठन** : केन्द्रीय समितिलाई आवश्यक सुझाव र सल्लाह दिन, केन्द्रीय समितिको नीति निर्देशन कार्यान्वयन गर्नमा सघाउ पुऱ्याउन तथा दैवी प्रकोप परेकोमा उद्धार र पुनर्स्थापना गर्ने कार्य प्रभावकारी ढङ्गले सञ्चालन गर्न गराउन केन्द्रीय समितिले उद्धार तथा उपचार उपसमिति र आपूर्ति, आश्रय तथा पुनर्स्थापना उपसमिति गठन गर्न सक्नेछ ।

✷**५ख. उद्धार तथा उपचार उपसमिति** : (१) उद्धार तथा उपचार उपसमितिमा देहायका सदस्यहरू रहने छन् :

| | | |
|---|---|---|
| (क) | स्वास्थ्य मन्त्री | -संयोजक |
| (ख) | सचिव, सञ्चार मन्त्रालय | -सदस्य |
| (ग) | सचिव, निर्माण तथा यातायात मन्त्रालय | -सदस्य |

⏭ गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६६ द्वारा संशोधित ।
■ दोस्रो संशोधनद्वारा संशोधित ।
✷ दोस्रो संशोधनद्वारा थप ।

(घ) उपरथी, [⏭]जङ्गी अड्डा -सदस्य

(ङ) प्रहरी महानिरीक्षक, प्रहरी प्रधान कार्यालय -सदस्य

(च) प्रतिनिधि, नेपाल रेडक्रस सोसाइटी -सदस्य

(छ) प्रतिनिधि, नेपाल स्काउट -सदस्य

(२) उद्धार तथा उपचार उपसमितिको सचिव संयोजकले तोके बमोजिम हुनेछ ।

(३) उद्धार तथा उपचार उपसमितिको आन्तरिक कार्यविधि उद्धार तथा उपचार उपसमिति आफैले व्यवस्थित गर्न सक्नेछ ।

(४) उद्धार तथा उपचार उपसमितिको काम र कर्तव्य केन्द्रीय समितिले तोके बमोजिम हुनेछ ।

[*]**५ग. आपूर्ति, आश्रय तथा पुनर्स्थापन उपसमिति** : (१) आपूर्ति, आश्रय तथा पुनर्स्थापन उपसमितिमा देहायका सदस्यहरू रहनेछन् :-

(क) आवास तथा भौतिक योजना मन्त्री -संयोजक

(ख) सचिव, अर्थ मन्त्रालय -सदस्य

(ग) सचिव, गृह मन्त्रालय -सदस्य

(घ) सचिव, आपूर्ति मन्त्रालय -सदस्य

(ङ) सचिव, श्रम तथा सामाजिक कल्याण मन्त्रालय -सदस्य

(च) सचिव, जलस्रोत मन्त्रालय -सदस्य

(छ) सचिव, निर्माण तथा यातायात मन्त्रालय -सदस्य

(ज) प्रतिनिधि, समाज कल्याण परिषद् -सदस्य

(२) आपूर्ति, आश्रय तथा पुनर्स्थापन उपसमितिको सचिव संयोजकले तोके बमोजिम हुनेछ ।

(३) आपूर्ति, आश्रय तथा पुनर्स्थापन उपसमितिको आन्तरिक कार्यविधि आपूर्ति, आश्रय तथा पुनर्स्थापना उपसमिति आफैले व्यवस्थित गर्न सक्नेछ ।

(४) आपूर्ति, आश्रय तथा पुनर्स्थापन उपसमितिको काम र कर्तव्य केन्द्रीय समितिले तोके बमोजिम हुनेछ ।

---

⏭ गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६६ द्वारा संशोधित ।

* दोस्रो संशोधनद्वारा थप ।

६. **केन्द्रीय समितिको काम र कर्तव्य** : केन्द्रीय समितिको काम र कर्तव्य देहाय बमोजिम हुनेछ :-

(क) दैवी प्रकोपबाट असर परेको इलाकालाई सङ्कटग्रस्त क्षेत्र घोषणा गर्न नेपाल सरकारलाई सिफारिश गर्ने,

◆(ख) दैवी प्रकोपको नियन्त्रण, रोकथाम र तत्सम्बन्धी पूर्व तयारी र दैवी प्रकोपबाट पीडित जनताको पुनर्स्थापना तथा दैवी प्रकोपबाट असर परेको क्षेत्रको पुनर्निर्माण आदि उद्धार कार्य सम्बन्धी राष्ट्रिय नीतिको तर्जुमा गर्न तथा सो नीति अनुसारको कार्यक्रम बनाई नेपाल सरकारसमक्ष पेश गर्ने,

(ग) खण्ड (ख) बमोजिमका नीति तथा कार्यक्रम नेपाल सरकारबाट स्वीकृत भएपछि कार्यान्वयन गर्ने गराउने,

(घ) केन्द्रीय दैवी प्रकोप सहायता कोषबाट नेपालभित्र तथा बाहिरबाट प्राप्त सहायता रकम, खाद्यान्न, लत्ता कपडा, औषधि, निर्माण सामग्री तथा अन्य वस्तुहरू सुरक्षितसाथ राख्ने र सो कोषबाट त्यस्तो वस्तुहरू आवश्यकता अनुसार सङ्कटग्रस्त क्षेत्रमा दैवी प्रकोप उद्धार कार्यको लागि पठाउने,

(ङ) ×....... ....दैवी प्रकोप उद्धार कार्य गर्न सामाजिक संघ संस्थाहरूलाई सम्मिलित गराउने र ती संघ संस्थाहरूको काम कारवाईमा समन्वय कायम गर्ने,

(च) दैवी प्रकोप उद्धार कार्यमा सहयोगको लागि टोलीहरू गठन गरी सङ्कटग्रस्त क्षेत्रमा पठाउने,

■(छ) जिल्ला समिति तथा स्थानीय समितिलाई उद्धार कार्य गर्ने गराउने सम्बन्धमा निर्देशन दिने,

(ज) ×...... ..दैवी प्रकोप उद्धार कार्यहरूको कार्यान्वयन सम्बन्धमा नेपाल सरकारले तोकेको अन्य कामहरू गर्ने,

(झ) नेपाल सरकारलाई समय समयमा कार्य प्रगतिको विवरण दिने ।

◆७. **अन्य दैवी प्रकोप उद्धार समितिहरूको गठन** : दैवी प्रकोप उद्धार कार्य गर्न गराउनको लागि नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी आवश्यकता

---

◆ पहिलो संशोधनद्वारा संशोधित ।
× पहिलो संशोधनद्वारा झिकिएको ।
■ दोस्रो संशोधनद्वारा संशोधित ।
◆ पहिलो संशोधनद्वारा संशोधित ।

अनुसार क्षेत्रीय दैवी प्रकोप उद्धार समिति, ‣... .... जिल्ला दैवी प्रकोप उद्धार समिति तथा स्थानीय दैवी प्रकोप उद्धार समिति गठन गर्न सक्नेछ । त्यस्ता समितिहरूको कार्यविधि र सदस्यहरूको कार्यावधि सोही सूचनामा तोकिए बमोजिम हुनेछ ।

✚७क. **क्षेत्रीय समितिको काम र कर्तव्य** : क्षेत्रीय समितिको काम र कर्तव्य देहाय बमोजिम हुनेछ :-

(क) दैवी प्रकोप उद्धार कार्य सम्बन्धी क्षेत्रीयस्तरको नीति तर्जुमा गर्ने तथा तत्सम्बन्धी कार्यक्रम बनाउने सम्बन्धमा केन्द्रीय दैवी प्रकोप उद्धार समितिलाई आवश्यक सुझाव दिने,

(ख) दैवी प्रकोप उद्धार कार्यहरूको सम्बन्धमा ■जिल्ला समितिहरू बीच समन्वय गर्ने गराउने,

(ग) दैवी प्रकोप उद्धार कार्यहरूको सम्बन्धमा केन्द्रीय समितिलाई समय समयमा जानकारी दिने,

(घ) केन्द्रीय समितिको निर्देशन अनुसार कार्यहरू गर्ने ।

८. ✂... ... ...

◆९. **जिल्ला समितिको काम र कर्तव्य** : (१) जिल्ला समितिको काम र कर्तव्य देहाय बमोजिम हुनेछ :-

(क) दैवी प्रकोप उद्धार कार्यहरूको सम्बन्धमा स्थानीय समितिहरू बीच समन्वय गर्ने गराउने,

(ख) दैवी प्रकोप उद्धार कार्यसम्बन्धी जिल्ला स्तरीय योजना तर्जुमा गरी त्यस्तो योजना ■क्षेत्रीय समितिमा पेश गर्ने,

(ग) स्थानीय समितिहरूबाट भए गरेको दैवी प्रकोप उद्धार कार्यहरूको रेखदेख गर्ने र भइरहेको दैवी प्रकोप उद्धार कार्यमा टेवा पुऱ्याउने,

(घ) दैवी प्रकोप उद्धार कार्यको सम्बन्धमा ■क्षेत्रीय समितिलाई समय समयमा जानकारी दिने,

---

‣ दोस्रो संशोधनद्वारा झिकिएको ।
■ दोस्रो संशोधनद्वारा संशोधित ।
✂ दोस्रो संशोधनद्वारा खारेज ।
◆ पहिलो संशोधनद्वारा संशोधित ।

■(ङ) केन्द्रीय समिति र क्षेत्रीय समितिको निर्देशन अनुसार कार्यहरू गर्ने ।

(२) उपदफा (१) बमोजिम गर्नु पर्ने सबै कार्यहरू जिल्ला समितिकै निर्णयबाट हुनु पर्नेछ ।

■९क. **स्थानीय समितिको काम र कर्तव्य** : स्थानीय समितिको काम र कर्तव्य देहायबमोजिम हुनेछ :-

(क) दैवी प्रकोपबाट भएको क्षतिको विस्तृत विवरण तयार गरी दैवी प्रकोपबाट पीडित व्यक्तिलाई उद्धार तथा पुनर्स्थापनाको लागि चाहिने आवश्यक स्रोत तथा साधनको समेत अनुमान गरी जिल्ला समितिमा पेश गर्ने,

(ख) आवश्यकता अनुसार स्वयंसेवकहरूको टोली गठन गरी उद्धार कार्य सञ्चालन गर्ने गराउने,

(ग) दैवी प्रकोपबाट घाइते हुन पुगेका व्यक्तिहरूलाई सकभर छिटो नजीकको स्वास्थ्य चौकी वा अस्पताल पुऱ्याउन आवश्यक व्यवस्था मिलाउने,

(घ) दैवी प्रकोपबाट पीडित व्यक्तिहरूलाई सुरक्षित स्थानमा राख्न लगाउने व्यवस्था गर्ने,

(ङ) जिल्ला समिति तथा अन्य स्थानीय स्रोतबाट प्राप्त भएको नगद तथा बस्तुगत सहयोग दैवी प्रकोपबाट पीडित परिवारहरूलाई व्यवस्थित तरीकाले वितरण गर्ने,

(च) दैवी प्रकोपको संभावित घटनाहरूको रोकथाम र नियन्त्रण गर्ने सम्बन्धमा पूर्व तयारीको लागि जनचेतना जगाउने कार्यक्रम सञ्चालन गर्ने,

(छ) दैवी प्रकोप उद्धार कार्य समाप्त भएपछि बाँकी रहन आएको मालसामान र नगद तथा तत्सम्बन्धी हिसाब किताब दैवी प्रकोप उद्धार कार्यको जिल्ला समितिमा बुझाउने ।

**१०. भाडा दिइने** : दफा ४ को खण्ड (ङ) वा (ज) बमोजिम गैर सरकारी कार्यालय, संस्था वा व्यक्तिको कुनै चल अचल सम्पत्ति अस्थायी रूपमा प्राप्त गरेमा वा सवारी साधन प्रयोग गरेमा त्यसरी प्राप्त गरेको चल अचल सम्पत्ति वा प्रयोग गरेको सवारी साधनको लागि प्रचलित दर अनुसारको भाडा नेपाल सरकारले तोकेको पदाधिकारी,

---

■ दोस्रो संशोधनद्वारा संशोधित (दफा ९क. पहिलो संशोधनद्वारा थप भएको) ।

संस्था वा ◆दैवी प्रकोप उद्धार समितिले सम्बन्धित कार्यालय, संस्था वा व्यक्तिलाई दिनेछ ।

तर अचल सम्पत्ति प्राप्त गर्दा बाली लागेको वा लाग्ने जग्गा पनि परेको रहेछ भने नोक्सानी भएको वा हुने बालीको लागि समेत आवश्यक क्षतिपूर्ति दिइनेछ ।

११. **मोल दिइने** : दफा ४ को खण्ड (झ) बमोजिम गैर सरकारी कार्यालय, संस्था वा व्यक्तिबाट खाद्यान्न, लत्ताकपडा, औषधि, निर्माण सामग्री तथा अन्य वस्तुहरू प्राप्त गरेमा त्यस्तो वस्तुको प्रचलित दरबाट हुन आउने मोलको रकम नेपाल सरकारले तोकेको पदाधिकारी, संस्था वा ◆दैवी प्रकोप उद्धार समितिले सम्बन्धित कार्यालय, संस्था वा व्यक्तिलाई दिनेछ ।

१२. **सहयोग गर्ने** : दैवी प्रकोप उद्धार कार्यमा सघाउ पुऱ्याउन ◆केन्द्रीय समिति, क्षेत्रीय समिति ‣... ... जिल्ला समिति तथा स्थानीय समितिलाई सम्बन्धित क्षेत्र तथा नजिकका क्षेत्रका सबै सरकारी तथा गैर सरकारी कार्यालय, संघ संस्था वा व्यक्तिले सहयोग गर्नु पर्नेछ ।

१३. **कोष** : ◆(१) दैवी प्रकोप सहायता कोष निम्न नामबाट खडा हुन सक्नेछ :-

(क) दैवी प्रकोप केन्द्रीय सहायता कोष,

(ख) दैवी प्रकोप क्षेत्रीय सहायता कोष,

(ग) ‣.... ....

(घ) दैवी प्रकोप जिल्ला सहायता कोष,

(ङ) दैवी प्रकोप स्थानीय सहायता कोष ।

(२) दैवी प्रकोप केन्द्रीय सहायता कोषमा देहायका रकम रहनेछन् :-

(क) नेपाल सरकारले प्रदान गरेको रकम,

(ख) राष्ट्रिय वा अन्तर्राष्ट्रिय संघ, संस्थाबाट प्राप्त रकम,

(ग) अन्य स्रोतबाट प्राप्त रकम ।

◆(३) दैवी प्रकोप क्षेत्रीय सहायता कोष, ‣.... .... दैवी प्रकोप जिल्ला सहायता कोष र दैवी प्रकोप स्थानीय सहायता कोषमा देहायका रकमहरू रहनेछन् :-

---

◆ पहिलो संशोधनद्वारा संशोधित ।
◆ पहिलो संशोधनद्वारा संशोधित ।
‣ दोस्रो संशोधनद्वारा झिकिएको ।
‣ दोस्रो संशोधनद्वारा झिकिएको ।

(क) नेपाल सरकारले प्रदान गरेको रकम,

(ख) दैवी प्रकोप केन्द्रीय सहायता कोषबाट प्राप्त रकम,

(ग) अन्य स्रोतबाट प्राप्त रकम ।

(४) कोषको सबै रकम कुनै बैंकमा दैवी प्रकोप सहायता कोषको नाममा जम्मा गरिनेछ ।

(५) दैवी प्रकोप उद्धार कार्यको लागि गर्नु पर्ने सबै खर्च यसै कोषबाट व्यहोरिनेछ ।

(६) कोषको खाताको संचालन सम्बन्धित समितिको निर्णय बमोजिम कम्तिमा दुई जनाको दस्तखतबाट गरिनेछ ।

(७) दैवी प्रकोप सहायता कोषको लागि प्राप्त खाद्यान्न, लत्ता कपडा, औषधि, निर्माण सामग्री इत्यादि जिन्सी आम्दानी र खर्चको हिसाब छुट्टै राखिनेछ ।

(८) कसैले केही समयको लागि घर, सवारीको साधन, जग्गा इत्यादि दिएकोमा त्यसको अभिलेख पनि राखिनेछ ।



१४. **लेखा र लेखापरीक्षण** : ♦(१) केन्द्रीय समिति, क्षेत्रीय समिति, ►... ... जिल्ला समिति र स्थानीय समितिले प्राप्त गरेको र खर्च गरेको मालसामान वा वस्तु तथा नगद रकमको लेखा प्रचलित कानुनबमोजिम राख्नु पर्नेछ र त्यस्तो आम्दानी र खर्चको ■लेखापरीक्षण भएपछि सर्वसाधारणको जानकारीको लागि प्रकाशित गर्नु पर्नेछ ।

■(२) केन्द्रीय समिति, क्षेत्रीय समिति, जिल्ला समिति तथा स्थानीय समितिबाट भएको खर्चको लेखापरीक्षण महालेखा परीक्षकको विभाग वा सो विभागले तोकेको कुनै दर्तावाला लेखापरीक्षकबाट हुनेछ ।

(३) नेपाल सरकारले कोषको हिसाब किताब, सम्बन्धित कागजात र अरू नगदी जिन्सी समेत जुनसुकै बखत जाँच्न वा जाँच्न लगाउन सक्नेछ ।

१५. **मिन्हा दिने** : दैवी प्रकोप उद्धार कार्यको लागि सरकारी कार्यालय वा संस्थाबाट खर्च भएको उद्धार सामग्री, साधन तथा नगद रकम मिन्हाको लागि केन्द्रीय समितिले

---

► दोस्रो संशोधनद्वारा झिकिएको ।
♦ पहिलो संशोधनद्वारा संशोधित ।
► दोस्रो संशोधनद्वारा झिकिएको ।
■ दोस्रो संशोधनद्वारा संशोधित ।

नेपाल सरकारसमक्ष सिफारिस गर्न सक्नेछ र त्यसरी सिफारिश भएमा नेपाल सरकारले प्रचलित कानुनबमोजिम मिन्हा गर्न सक्नेछ ।

१६. **दण्ड सजाय** : (१) दफा ४ बमोजिम दिएको आदेश उल्लंघन गर्नेलाई तीन महीनासम्म कैद वा एक हजार रुपैयाँसम्म जरिवाना वा दुबै सजाय हुनेछ ।

(२) दैवी प्रकोप उद्धार कार्यमा बाधा पुऱ्याउनेलाई ६ महीनासम्म कैद वा दुईहजार रुपैयाँसम्म जरीवाना वा दुबै सजाय हुनेछ ।

१७. ❖.... ......... ....

१८. **नेपाल सरकारवादी हुने** : यस ऐन अन्तर्गतको मुद्दा नेपाल सरकारवादी हुनेछ ।

१९. **नेपाल सरकारले निर्देशन दिन सक्ने** : दैवी प्रकोप उद्धार कार्यको सम्बन्धमा नेपाल सरकारले ◆केन्द्रीय समिति, क्षेत्रीय समिति, ‣... ...जिल्ला समिति र स्थानीय समिति तथा सम्बन्धित कुनै संघ संस्था, कार्यालय, पदाधिकारी वा व्यक्तिलाई आवश्यक निर्देशन दिन सक्नेछ र सो निर्देशनको पालना गर्नु पर्ने कर्तव्य सम्बन्धित निकाय वा पदाधिकारी वा व्यक्तिको हुनेछ ।

२०. **अधिकार प्रत्यायोजन** : (१) नेपाल सरकारले यस ऐन बमोजिम आफूलाई प्राप्त केही अधिकार नेपाल राजपत्रमा सूचना प्रकाशित गरी कुनै पदाधिकारी वा समिति वा व्यक्ति वा संस्थालाई प्रत्यायोजन गर्न सक्नेछ ।

(२) केन्द्रीय समिति वा अन्य समितिले आफूलाई यस ऐन बमोजिम प्राप्त भएको अधिकारमध्ये केही अधिकार कुनै समिति वा व्यक्ति वा संस्थालाई प्रत्यायोजन गर्न सक्नेछ ।

२१. **नियम बनाउने अधिकार** : यस ऐनको उद्देश्य कार्यान्वित गर्नको लागि नेपाल सरकारले आवश्यक नियमहरू बनाउन सक्नेछ ।

२२. **बचाउ** : यस ऐनमा लेखिएको कुरामा यसै ऐन बमोजिम र अरूमा प्रचलित कानुनबमोजिम हुनेछ ।

---

❖ न्याय प्रशासन सुधार (चौथो संशोधन) ऐन, २०४३ द्वारा खारेज ।

◆ पहिलो संशोधनद्वारा संशोधित ।

‣ दोस्रो संशोधनद्वारा झिकिएको ।

**द्रष्टव्य** :

१ पहिलो संशोधनद्वारा रूपान्तर भएका शब्दहरू :-
"उद्धार कार्य" को सट्टा "दैवी प्रकोप उद्धार कार्य" ।

२ दोस्रो संशोधनद्वारा रूपान्तर भएका शब्दहरू :-
"इलाका" को सट्टा "स्थानीय" ।

३ केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६३ ले देहायको शब्दको सट्टा देहायको शब्द राखी रूपान्तरण गरेको छ :
"श्री ५ को सरकार" भन्ने शब्दको सट्टा "नेपाल सरकार" ।